# राष्ट्रिय युवा नीति, २०६६

## १. पृष्ठभूमि :-

युवा शक्ति राष्ट्रको अमूल्य सम्पत्ति हो । युवा वर्ग राज्यको अजस्र स्रोत र परिवर्तनको वाहक शक्ति पनि हो । युवाहरू आर्थिक, सामाजिक, राजनीतिक र सांस्कृतिक रूपान्तरणका अग्रदूत तथा परिवर्तनका संवाहक शक्ति हुन् । साहस, सिर्जनशीलता, सिक्ने क्षमता एवं उच्च आत्मविश्वासका कारण यो वर्ग राष्ट्रको प्रमुख धरोहरको रूपमा रहेको हुन्छ जसलाई राष्ट्र निर्माणको प्रमुख स्रोत समेत मानिन्छ । नेपालमा १६-४० वर्ष उमेर समूहको जनसंख्या कूल जनसंख्याको ३८.८% रहेको छ । गुणात्मक र सङ्ख्यात्मक दुवै दृष्टिले युवा वर्ग राष्ट्रको मेरूदण्ड भएकोले युवाहरूको सर्वाङ्गीण विकास गरी उनीहरूको क्षमतालाई राष्ट्रिय विकासको मूलधारमा ल्याउनु जरूरी भएको छ ।

युवाहरूमा राष्ट्र, राष्ट्रियता र जनताप्रतिको बफादारी; युवाहरूका आधारभूत आवश्यकताहरूको परिपूर्ति; समानता एवं समतामूलक वितरणको सिद्धान्त; संवैधानिक सर्वोच्चता, वैयक्तिक स्वतन्त्रता, विश्वव्यापी मानवाधिकारको सिद्धान्त, लोकतान्त्रिक मूल्य मान्यता; जाति, भाषा र वातावरणीय सम्पदाको संरक्षण र सम्वर्द्धन तथा सह-अस्तित्व जस्ता आधारभूत मूल्य मान्यताहरूको प्रवर्द्धन हेतु यो नीति तर्जुमा गरिएको छ ।

## २. युवा नीतिको आवश्यकता :-

युवाहरू आर्थिक, सामाजिक र राजनीतिक परिवर्तनका संवाहक भएकोले यस वर्गलाई राष्ट्रिय नीतिबाट विशेष रूपमा सम्बोधन गरी राष्ट्र निर्माणमा अग्रसर गराउनु अहिलेको प्रमुख आवश्यकता रहेको छ ।

नेपालको हरेक राजनीतिक परिवर्तन, लोकतन्त्रको स्थापना र अन्य सामाजिक आन्दोलनहरूमा युवाहरूको महत्वपूर्ण योगदान रही आएको छ । विगतमा भएका शान्तिपूर्ण जन आन्दोलन, दस वर्षे सशस्त्र द्वन्द्वकाल, मधेश आन्दोलन, थरूहट आन्दोलन लगायतका आस्था र पहिचानका आन्दोलनहरूबाट युवाहरूको विद्यमान अवस्थालाई विशेषरूपमा सम्वोधन गर्नुपर्ने माग उजागर भएकाले युवासम्बन्धी नीतिको आवश्यकता बढ्न गएको हो ।

नेपालमा सङ्घीय लोकतान्त्रिक गणतन्त्रको स्थापनाको लागि युवाहरूले गरेको उल्लेखनीय योगदानको कदर स्वरूप वर्ग, जाति, भाषा, धर्म र लैङ्गिकता जस्ता विषयहरूलाई एकातिर सम्बोधन गर्नु पर्ने आवश्यकता छ भने अर्कोतिर अल्पसङ्ख्यक, सीमान्तकृत, शारीरिक एवं मानसिक रूपमा अपाङ्ग र पिछडिएको क्षेत्रमा रहेका युवा वर्गलाई समेत विशेष रूपमा सम्बोधन गर्नु जरूरी छ । समावेशी, समानुपातिक र समविकासको सिद्धान्त अनुरूप सङ्घीय लोकतान्त्रिक गणतन्त्रलाई संस्थागत गर्न, राष्ट्रिय स्वाधीनता तथा नेपालको सार्वभौमसत्तालाई अक्षुण्ण राख्न, आर्थिक, सामाजिक, राजनीतिक तथा सांस्कृतिक रूपान्तरणमा युवा नेतृत्वको सम्भावनालाई मूर्तरूप दिन र राज्य सञ्चालनका हरेक प्रक्रियामा युवाहरूको सक्रिय सहभागितालाई सुनिश्चित गर्न राज्यले ठोस नीति अवलम्वन गर्नु पर्ने भएको छ।

नेपालको अन्तरिम संविधान, २०६३ बमोजिम देश विकासमा युवा जनशक्तिलाई परिचालन गर्न राज्यले विशेष नीति अवलम्बन गर्नु पर्ने कुराको दिशाबोध गरेको परिप्रेक्ष्यमा राष्ट्रिय युवा नीतिको आवश्यकता झनै बढेर गएको छ । शिक्षा आर्जनको क्रममा रहेका, रोजगारी तथा वृत्तिको अवसरको खोजीमा रहेका तथा वृत्तिविकासको अवस्थामा रहेका युवाहरूका मुद्दा तथा प्राथमिकताहरू स्वभावतः फरक हुन्छन् । कलिलो उमेर समूहमा पर्ने युवाहरूको संवेदनशीलतालाई दृष्टिगत गरी जीवनयापनका विविध पक्षहरूबारे मार्गदर्शन गर्ने राज्यको प्रमुख दायित्व रहेकोले त्यस्ता युवाहरूलाई लक्षित गरी कार्यक्रम सञ्चालन गर्न आवश्यक भएको छ।

युवाहरू राष्ट्रको महत्वपूर्ण मानव स्रोत भएकाले आर्थिक, सामाजिक, राजनीतिक, सांस्कृतिक लगायत जनजीवनका हरेक क्षेत्रमा उनीहरूमा निहित क्षमताको विकास गरी राष्ट्र निर्माणमा अग्रसर गराउन राष्ट्रिय युवा नीतिको आवश्यकता अझ घनीभूत भएको छ । युवाहरूमा सिर्जनशीलता, वैज्ञानिकता, जिम्मेवारीपूर्ण व्यवहार, उद्यमशीलता, नागरिक सोच र जवाफदेहिताको विकास गरी न्याय र नैतिकतामा आधारित स्वच्छ सामाजिक जीवनको विकास गर्न उनीहरूमा रहेको अन्तर्निहीत क्षमताको विकास गर्नु जरूरी छ।

जोखिममा रहेका युवाहरूलाई आवश्यक सहयोग पुऱ्याउन र उनीहरूका अन्तर्निहित क्षमता उजागर गर्न, युवा प्रतिँभा पलायनलाई रोक्नका लागि उपयुक्त व्यवस्थापन गर्न तथा विश्वव्यापी रूपमै सिर्जना हुने अवसरहरूमा नेपाली युवाहरूको पहुँचलाई सुनिश्चित गर्दै थप सम्भावनाको विकास गर्न पनि युवा नीतिको आवश्यकता पर्न गएको छ।

**३. <u>परिभाषा</u> :-**

यस नीतिको प्रयोजनका लागि :-

(१) "युवा" भन्नाले १६ – ४० वर्षको उमेर समूहका महिला, पुरूष तथा तेस्रो लिङ्गीहरूलाई जनाउने छ ।

(२) "प्राथमिकताको समूह" भन्नाले महिला, आदिवासी, जनजाति, दलित, मधेशी तथा पिछडिएको क्षेत्रमा रहेका युवाहरूलाई जनाउने छ ।

(३) "विशेष प्राथमिकताको समूह" भन्नाले द्वन्द्वपीडित, जोखिममा परेका युवा, अपाङ्गता भएका युवा र सीमान्तकृत अल्पसङ्ख्यक समुदायका युवालाई जनाउने छ ।

(४) "द्वन्द्वपीडित युवा" भन्नाले २०५२ साल देखि २०६३ मंसिर ५ गते सम्म नेपालमा भएको सशस्त्र द्वन्द्व र पछिल्ला समयका द्वन्द्वमा परी मृत्यु भएका पीडित परिवारका, अङ्गभङ्ग बनाइएका तथा विस्थापित भएका युवाहरूलाई जनाउने छ ।

(५) "जोखिममा रहेका युवा" भन्नाले एच.आई.भी./एड्स सङ्क्रमित, बेचबिखनमा परेका, लागू औषधको प्रयोगकर्ता, यौन व्यवसायमा संलग्न, सडकमा रहेका, मुक्त कमैया परिवारका तथा असुरक्षित गन्तव्यका मुलुकहरूमा वैदेशिक रोजगारीमा संलग्न युवाहरूलाई जनाउने छ ।

(६) "अपाङ्गता भएका युवा" भन्नाले सबै प्रकारका शारीरिक र मानसिक अपाङ्गता भएका युवाहरूलाई जनाउने छ ।

(७) "सीमान्तकृत अल्पसङ्ख्यक समुदायका युवा" भन्नाले भौगोलिक विकटता, जातीय, भाषिक, सांस्कृतिक, क्षेत्रीय, वर्गीय तथा लैङ्गिक आधारमा राज्य तथा गैरराज्यका सेवा सुविधाबाट वञ्चित, सीमान्तकृत तथा राष्ट्रिय विकासको मूल प्रवाहमा आउन नसकेका अन्य युवाहरूलाई जनाउने छ ।

**४. <u>दीर्घकालीन सोच र लक्ष्य</u> :-**

**(१) दीर्घकालीन सोच :**

युवाहरूको आधारभूत अधिकारहरूको प्रत्याभूति गर्दै युवा सशक्तीकरणको माध्यमबाट कलिलो उमेरका संवेदनशीलतालाई समेत दृष्टिगत गरी सामर्थ्यवान, उद्यमशील,

सिर्जनशील तथा वैज्ञानिक एवं सकारात्मक सोचयुक्त समृद्ध युवा तयार गरी राष्ट्रको आर्थिक, सामाजिक, राजनीतिक र सांस्कृतिक जीवनमा अर्थपूर्ण योगदान दिन सक्ने गरी राष्ट्रका युवाहरूलाई नेतृत्वदायी भूमिकामा स्थापित गराउनु यस राष्ट्रिय युवा नीतिको दीर्घकालीन सोच हुनेछ।

(२) **लक्ष्य :**

सार्थक सहभागिता, क्षमता र नेतृत्व विकासको माध्यमबाट युवाहरूलाई राष्ट्रिय विकासको मूलधारमा समाहित गर्दै समृद्ध, आधुनिक र न्यायपूर्ण नेपाल निर्माण गर्न युवाहरूको भूमिका र तिनीहरूमा रहेको अन्तर्निहित क्षमतालाई गुणात्मक बनाउनु यस नीतिको प्रमुख लक्ष्य हुनेछ।

**५. <u>उद्देश्यहरू</u> :-**

यस नीतिका उद्देश्य देहायबमोजिम रहेका छन् :

(१) राष्ट्र निर्माण एवं राष्ट्रिय विकासमा युवाहरूको भूमिका र सम्भाव्यताको विकास र विस्तार गर्ने,

(२) युवाहरूलाई राष्ट्र एवम् राष्ट्रियता, जनता र सङ्घीय लोकतान्त्रिक गणतन्त्र प्रति समर्पित र प्रतिबद्ध बनाउँदै उत्तरदायित्व र जवाफदेहि भावनामा वृद्धि गर्ने,

(३) युवावर्गमा सिर्जनशीलता, उद्यमशीलता र नवोन्वेशी ९क्ष्ललयखबतष्खभ० क्षमताको विकास गरी विकासको आधारभूत शक्तिको रूपमा विकास गर्ने र उनीहरूमा रहेको अन्तर्निहित क्षमता उजागर गर्ने,

(४) श्रमप्रति सम्मानगर्ने संस्कृतिको विकास गर्दै युवाहरूको शारीरिक, मानसिक, बौद्धिक, नैतिक तथा संवेगात्मक पक्षको समुचित विकास गरी उच्च मनोवलयुक्त, नैतिकवान, सुसंस्कृत, सिर्जनशील तथा व्यावसायिक रूपमा दक्ष युवा तयार गर्ने,

(५) युवाहरूका आधारभूत अधिकारहरूलाई सुनिश्चित गर्दै उत्पादनशील स्रोतहरूमा युवा वर्गको पहुँचलाई वृद्धि गरी राष्ट्रको आर्थिक, सामाजिक, राजनीतिक एवं सांस्कृतिक क्षेत्रका सबै तहका नीति निर्माण, निर्णय एवं कार्यान्वयन प्रक्रियामा लैङ्गिक संवेदनशीलतामा आधारित अर्थपूर्ण सहभागिताको माध्यमबाट नेतृत्व क्षमता विकास गरी युवाहरूलाई राष्ट्रिय विकासको संवाहक शक्तिका रूपमा स्थापित गर्ने,

(६) शिक्षा आर्जनको क्रममा रहेका तथा समाजमा आफ्नो पहिचान स्थापित गर्ने संवेदनशील अवस्थामा रहेका युवाहरूको शिक्षा, रोजगारी, वृत्ति लगायतका वैयक्तिक एवं सामाजिक विकासमा सघाउ पुऱ्याउने,

(७) प्राथमिकताको समूह तथा विशेष प्राथमिकताको समूहमा परेका युवाहरूलाई सकारात्मक विभेदको माध्यमबाट सशक्तीकरण गरी विकासको मूल प्रवाहमा ल्याउने ।

## ६. नीतिहरू :-

राष्ट्रिय युवा नीतिले लिएका उद्देश्यहरू हासिल गर्न देहायबमोजिमका नीतिहरू अख्तियार गरिनेछ :-

(१) युवाहरूलाई परिवर्तनका संवाहक र दिगो विकासका उत्प्रेरक शक्तिको रूपमा विकास गर्न राष्ट्र, राष्ट्रियता, राष्ट्रिय एकता, राष्ट्रिय अखण्डता, लोकतन्त्र र मानवाधिकारका आधारभूत सिद्धान्त एवं मूल्यमान्यताहरू बोध गराउने कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

(२) देशको आर्थिक, सामाजिक तथा शासकीय पद्धतिको रूपान्तरणको प्रक्रियामा युवाहरूको भूमिकालाई उच्च महत्व दिँदै सो प्रक्रियामा युवाहरूको संलग्नतालाई बढावा दिइनेछ ।

(३) राज्यका नीति निर्माणमा अर्थपूर्ण योगदान पुऱ्याउन युवाहरूलाई आर्थिक, सामाजिक, राजनीतिक एवं सांस्कृतिक सशक्तीकरणका माध्यमबाट प्रोत्साहन गरिनेछ ।

(४) विश्व अन्तरसम्बन्धबारे युवाहरूलाई जागरूक गराउँदै सहस्राब्दी विकास लक्ष्य लगायत अन्तर्राष्ट्रियस्तरमा गरिएका युवासम्बन्धी प्रतिवद्धताहरूको परिपालनामा जोड दिइनेछ ।

(५) युवाहरूलाई समाजका कर्मठ, क्रियाशील, नवीनताको पक्षधर र रचनात्मक शक्तिमा परिणत गर्न समाजप्रति जवाफदेहि र उत्तरदायित्व वहन गर्ने एवं लोकतान्त्रिक प्रणाली प्रति प्रतिवद्ध रहन सक्ने बनाउन विशेष कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

(६) युवाहरूलाई उनीहरूको उमेर समूहको आवश्यकतालाई दृष्टिगत गर्दै खास गरी शिक्षा आर्जन तथा वृत्तिको अवसरको खोजीमा रहेका युवाहरूलाई लक्षित गरी कार्यक्रमहरू सञ्चालन गर्न विशेष जोड दिइनेछ ।

(७) युवाहरूमा नैतिकता, चारित्रिक गुण तथा अनुशासनको विकास गर्न चेतनामूलक कार्यक्रमहरू सञ्चालन गरी राज्य र समाजप्रति दायित्व बोध गराउने र श्रमप्रति सम्मान गर्ने संस्कारको विकास गरिनेछ ।

(८) समाजमा विद्यमान गरिबी, अशिक्षा, छुवाछुत, कुरीति, विभेद र विषमता जस्ता समस्याहरू हटाउन युवा परिचालन गर्ने नीति लिइनेछ ।

(९) निजी तथा गैरसरकारी संस्था एवम् स्थानीय निकाय समेतको सहकार्यमा युवाहरूलाई सामाजिक परिवर्तनका वाहक शक्तिको रूपमा विकास गरिनेछ ।

(१०) आर्थिक, सामाजिक, सांस्कृतिक र राजनीतिक क्षेत्रमा देखिएका विचलनबाट मुक्त सचेत युवाशक्ति तयार गर्न विभिन्न कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

(११) सवै जातजाति, धर्म, वर्ण, लिङ्ग, वर्ग र क्षेत्रका युवाहरूको सशक्तीकरण र विकासका लागि समान अवसरहरूको सिर्जना गरी विविधताको उपयोग अनुकूल वातावरण तयार गरिनेछ ।

(१२) जनजीवनका विविध क्षेत्रमा विशेष योगदान गरेका युवा प्रतिभाहरूलाई राज्यको तर्फबाट सम्मानित गरिनेछ ।

(१३) युवाहरूमा अन्तर्निहित प्रतिभाको प्रस्फुटन, सीप र क्षमताको विकास गरी उत्पादनशील क्षेत्रमा उपयोग गर्न युवा प्रतिभाको खोजीलाई संस्थागत गर्दै सशक्तीकरण गर्न निजी क्षेत्रसमेतको सहभागितामा उनीहरूको ज्ञान, सीप र क्षमता विकासका लागि समुचित लगानी गरिनेछ ।

(१४) युवाहरूमा उद्यमशीलताको विकास गर्न विविध कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

(१५) मुलुकको भौगोलिक, सामाजिक तथा आर्थिक अवस्थाबारे जानकारी दिलाउँदै राष्ट्रको विकासमा युवाहरूलाई स्वयंसेवकको रूपमा सहभागी गराउने कार्यक्रमलाई प्राथमिकता दिइनेछ ।

(१६) राष्ट्रिय विकासमा युवाहरूको भूमिका र सम्भाव्यताको विकास गर्न गुणस्तरीय शिक्षा, तालिम, अध्ययन र अनुसन्धानका समुचित अवसरहरूको सिर्जना एवं विकास गरिनेछ ।

(१७) युवाहरूमा सकारात्मक एवं वैज्ञानिक विचार र सोचको विकास गर्न अध्ययन, अनुसन्धान र युवामैत्री वातावरणको सिर्जना गरी युवा परिचालन कार्यक्रमका माध्यमबाट युवाहरूको क्रियाशीलता बढाइनेछ ।

(१८) विभिन्न क्षेत्रका प्रतिभावान् युवाहरूलाई देशभित्रै वृत्तिविकासका अवसरहरूको सिर्जना गरी प्रतिभा पलायन हुनबाट जोगाउने वातावरण सिर्जना गरिनेछ ।

(१९) साहित्य, कला, संस्कृति, सङ्गीत, अभिनय र खेलकुद जस्ता सिर्जनशील क्षेत्रहरूमा युवाहरूको संलग्नतालाई प्रोत्साहन गरिनेछ । यस क्षेत्रमा संलग्न युवाहरूलाई प्रोत्साहनको माध्यमबाट राष्ट्रिय गौरव बढाउन जोड दिइनेछ ।

(२०) खेलकुदलाई व्यावसायीकरण, आधुनिकीकरण र वैज्ञानिकीकरण गर्दै यसलाई विकासको अभिन्न अङ्गका रूपमा लिई उचित साधनस्रोतको परिचालनबाट युवाहरूलाई अन्तर्राष्ट्रिय प्रतिस्पर्धामा सक्षम बनाउनुका साथै खेलाडीहरूको वृत्तिविकास एवं व्यावसायिकताको विकासमा जोड दिइनेछ ।

(२१) राज्यका विभिन्न निकायहरूबाट युवाका लागि सञ्चालन गरिने कार्यक्रमहरूलाई एकीकृत रूपमा समन्वय गर्ने प्रणाली विकास गरिनेछ ।

(२२) युवाहरूको स्वास्थ्यमाथिको पहुँचलाई अभिवृद्धि गरी स्वास्थ्य चेतना प्रवर्द्धन गर्ने कार्यक्रमहरूलाई प्रोत्साहन गरिनेछ ।

(२३) विश्वव्यापीरूपमा विस्तार हुँदै गइरहेको दुर्व्यसनमूलक र गैरसामाजिक क्रियाकलापहरूबाट नेपाली युवाहरूलाई मुक्त गर्दै युवाहरूमा सकारात्मक सोच र संस्कृतिको विकास गर्ने तर्फ सामाजिक प्रयासहरू लक्षित गरिनेछन् ।

(२४) प्राथमिकताको समूह तथा विशेष प्राथमिकताको समूहमा रहेका युवाहरूलाई राज्यको तर्फबाट उपलब्ध गराउने सेवा सुविधामा विशेष प्राथमिकता प्रदान गरी कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

प्रस्तुत नीति कार्यान्वयन गर्न राज्यका क्षेत्रगत नीतिहरूसँगको तादाम्यतामा देहायबमोजिमका कार्यनीतिहरू अवलम्बन गरिनेछ :

(१) **जीवनयापनका आधारभूत अधिकार :-**

(क) युवाहरूका लागि गास, बास, कपास, शिक्षा, स्वास्थ्य, रोजगारी र सुरक्षाको अधिकारलाई स्थापित गर्न समन्वयात्मक तरिकाले कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

(ख) युवाका लागि वर्गीय, जातीय, पेशागत, भाषिक, धार्मिक, क्षेत्रीय, लैङ्गिक र अपाङ्गताका आधारमा गरिने भेदभावबाट मुक्त र भयरहित वातावरणमा आत्मसम्मानका साथ बाँच्न पाउने अधिकारलाई सुनिश्चित गरिनेछ ।

(२) **शिक्षा :-**

(क) उच्चमाध्यमिक तहसम्मको शिक्षालाई क्रमशः निःशुल्क तथा अनिवार्य बनाउनेतर्फ गर्दै युवाहरूको शिक्षा माथिको पहुँचलाई सुनिश्चित गरिनेछ ।

(ख) शिक्षालाई वैज्ञानिक, व्यावहारिक र सीपमूलक बनाउँदै श्रमसँग आवद्ध गरी प्रवेशिका तहको शिक्षापश्चात् सामान्य जीविकोपार्जन गर्न सक्षम बनाइनेछ ।

(ग) नेपालको जलसम्पदा, वनसम्पदा, पर्यटकीयसम्पदा, कृषि, पशुपालन, जडीबुटी आदि विषयमा जोड दिई प्राविधिक शिक्षालयहरू स्थापना गरी प्राविधिक जनशक्ति तयार गरिनेछ ।

(घ) प्रतिभावान् युवाहरूका लागि उच्चशिक्षाको अध्ययनलाई सहज र सुलभ वनाइनेछ भने विशेष प्राथमिकताका समूहलाई लक्षित गरेर विशेष कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

(ङ) दिगो शान्ति, राष्ट्र, राष्ट्रियता, लोकतान्त्रिक मूल्यमान्यता, कानुनी राज्य, नागरिक अधिकार एवं दायित्वप्रति उन्मुख बनाउने खालका शैक्षिक कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

(च) विशेष प्राथमिकताको समूहमा पर्ने युवाहरूको शिक्षाको अवसरलाई बढावा दिनका निम्ति विशेष छात्रवृत्तिको व्यवस्था मिलाइनेछ ।

(छ) राष्ट्रिय तथा अन्तर्राष्ट्रिय श्रम वजारमा आवश्यक दक्ष जनशक्तिको विकास गर्ने खालका शैक्षिक कार्यक्रमहरू सञ्चालन गरिनेछन् । साथै विदेशी श्रम बजारमा संलग्न युवाहरूलाई लक्षित गरी विशेष शैक्षिक कार्यक्रम संचालन गरिनेछ ।

(ज) उच्च शिक्षामा अध्ययनरत वा अध्ययन गरी सकेका इच्छुक युवाहरूलाई व्यावहारिक ज्ञान दिलाउन ग्रामीण क्षेत्रको विकासमा स्वयंसेवकका रूपमा सहभागी गराइने कार्यक्रम सञ्चालन गरिनेछ ।

(झ) औपचारिक शिक्षाबाट वञ्चित युवाहरूका लागि आवश्यक सीपमूलक तालिम तथा साक्षरता कार्यक्रम सञ्चालन गरिनेछ ।

(ञ) नेपालको प्राकृतिक स्रोतसाधनहरूको सदुपयोग हुने गरी पर्यटन, घरेलु उद्योग, कृषि उद्योगका विषयमा सीप प्रशिक्षण केन्द्रको स्थापना गरी तालिम दिइनेछ भने सरकारी तथा गैरसरकारी क्षेत्रबाट शिक्षामा भइरहेको लगानीलाई कृषि, पर्यटन, पशुपालन, वन विज्ञान, जडीबुटी उत्पादन तथा प्रशोधन, जलविद्युत् लगायतका क्षेत्रहरूमा समुचित प्रविधिको विकास गर्नका लागि केन्द्रित गरिनेछ ।

(ट) द्वन्द्व, अपहेलना र अभाव लगायत विविध कारणले औपचारिक शिक्षा छाडेका युवाहरूलाई लक्षित गरी विशेष शिक्षाको व्यवस्था गर्न पहल गरिनेछ ।

**(३) स्वास्थ्य तथा परिवार कल्याण :-**

(क) युवाहरूको आधारभूत स्वास्थ्य सेवालाई सुलभ गराउँदै स्वास्थ्यसम्बन्धी सूचनामा युवाहरूको पहुँच कायम गरिनेछ ।

(ख) स्वास्थ्य शिक्षालाई प्रारम्भिक तहको पाठ्यक्रमदेखि नै समावेश गरी शुद्ध खानेपानी, स्वस्थ जीवनशैली, पोषण, स्वस्थ वातावरण, जोखिममुक्त काम आदिका बारेमा प्रशिक्षित गरिनेछ ।

(ग) युवालाई यौन स्वास्थ्य सुरक्षासम्बन्धी शिक्षा प्रदान गर्दै सबै प्रकारका यौनजन्य हिंसाबाट मुक्त गराउँदै सुरक्षित र सकारात्मक यौनव्यवहार अपनाउन प्रोत्साहित गरिनेछ ।

(घ) एच.आई.भी. ⁄ एड्सको सम्भावित जोखिमवारे आम नेपाली युवालाई जनचेतनामार्फत् सचेत गराउँदै त्यसबाट सुरक्षित राख्ने रणनीति लिइनेछ । साथै यसबाट सङ्क्रमित युवाहरूका लागि विशेष परामर्श सेवा केन्द्रहरू सञ्चालन गर्ने, एन्टी रिट्रोभाइरल औषधिहरू सुलभ तरिकाबाट नियमित रूपमा उपलब्ध गराउने र सङ्क्रमित युवाहरू उपर हुने गरेका सबैखाले सामाजिक विभेदवाट मुक्त गराउँदै सीपमूलक शिक्षा दिई समाजमा सम्मानित र सहज जीवनयापनको वातावरण तयार गरिनेछ ।

(ङ) घातक प्रकृतिका रोगहरूबाट युवालाई जोखिममुक्त गराउन स्वास्थ्यसम्बन्धी परामर्श सेवा केन्द्रहरूको स्थापना गरिनेछ ।

(च) युवाहरूको खाद्य अधिकारलाई सुरक्षित गर्दै कुपोषणबाट बचाउनका लागि आहार विहार, सरसफाइमा ध्यान दिने स्वस्थ्यकर बानी बसाल्न प्रशिक्षित गरिनेछ ।

(छ) भोकमरी र कुपोषणबाट प्रभावित युवाहरूको पहिचान गरी उनीहरूप्रति लक्षित विशेष कार्यक्रम सञ्चालन गरिनेछ ।

(ज) दाम्पत्य जीवनसँग सम्वन्धित विषयमा युवालाई मनोवैज्ञानिक तथा अन्य संवेदनशिल विषयमा परामर्शका लागि युवा सूचना तथा परामर्श केन्द्रको स्थापना गरिनेछ ।

(झ) राज्यका तर्फबाट युवाहरूको स्वास्थ्य अधिकारको रक्षाका लागि स्वास्थ्य वीमाको व्यवस्था गर्न पहल गरिनेछ ।

(ञ) परिवार नियोजन, मातृशिशु स्याहार, मातृत्व अधिकार, शिशु जन्मान्तरजस्ता विषयमा स्वास्थ्य संस्थाहरूसँग समन्वय गरी युवाहरूलाई प्रशिक्षित गरिनेछ ।

(ट) महिलाहरूको प्रजनन् अधिकारलाई स्थापित गर्दै उनीहरूको प्रजनन् स्वास्थ्य स्थितिमा सुधार ल्याउन विशेष कार्यक्रम सञ्चालन गरिनेछ ।

(ठ) गर्भवती र प्रसुती अवस्थाको हेरचाहलाई राज्यको दायित्वको रूपमा स्थापित गर्नेतर्फ कार्यक्रम सञ्चालन गरिनेछ ।

(ड) युवाहरूको मानसिक स्वास्थ्य अभिवृद्धिका लागि राष्ट्रव्यापी चेतनामूलक कार्यक्रम सञ्चालन गर्दै युवाहरूलाई मानसिक स्वास्थ्यप्रति जागरूक गराइनेछ ।

(ढ) मानसिक अस्वस्थ्यता बेहोरिरहेका युवाहरूको उपचार र समाजमा पुनर्स्थापनका लागि विशेष लक्षित कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

**(४) सामाजिक सुरक्षा :-**

(क) बेरोजगार युवाहरूलाई रोजगारीको व्यवस्था नहुँदासम्म सामाजिक संरक्षण प्रदान गर्नेसम्बन्धी विषयलाई अध्ययनको आधारमा अगाडि बढाइनेछ ।

(ख) युवाका लागि स्वास्थ्य, वृत्तिविकास लगायतका क्षेत्रमा परामर्श सेवा उपलब्ध गराउने व्यवस्था मिलाइनेछ ।

(ग) युवाहरूको पारिवारिक जीवनलाई सहज र सुमधुर बनाउन प्रोत्साहित गदै घरेलु हिंसा र यौनजन्य हिंसाका विरूद्ध जनमत तयार गरिनेछ ।

(घ) बालविवाह, वहुविवाह जस्ता कुप्रथालाई अन्त्य गर्नका लागि युवालाई परिचालन गरिनेछ ।

(ङ) विशेष प्राथमिकताको समूहमा पर्ने युवाहरूलाई सामाजिक सुरक्षाका विषयहरूमा प्राथमिकता दिइनेछ ।

**(५) रोजगारी :-**

(क) रोजगारी अभिवृद्धि गर्न उद्यमशीलता तथा अन्य व्यावसायिक तालिम प्रदान गर्दै ग्रामीण र कृषि जन्य उद्योगको विकासमा जोड दिइनेछ ।

(ख) युवाहरूमा व्यावसायिकता तथा उद्यमशीलताको विकास र रोजगारीको सिर्जना गर्नका लागि आवश्यकतानुसार वित्तीय संस्थाको स्थापना र

विकास गर्नेतर्फ पहल गरिने छ । प्राविधिक ज्ञान तथा सीप भएका युवाहरूमा उद्यमशीलता विकास गर्न प्रमाणपत्रको आधारमा युवा मैत्री ऋण र बीउ पूँजी (Seed Money) उपलब्ध गराउने कार्यक्रम सञ्चालन गरिनेछ ।

(ग) श्रमवजार र श्रमशक्ति उत्पादनमा देखिएको असामान्जस्यता कम गर्दै श्रम बजारको आवश्यकता अनुरूपको युवा जनशक्ति तयार गर्नमा जोड दिइनेछ ।

(घ) युवाहरूलाई सार्वजनिक सेवामा आकर्षित गर्न उपयुक्त रणनीति तयार गरी सोका लागि आवश्यक सुविधाहरूको व्यवस्था गरिनेछ ।

(ङ) आर्थिक र सामाजिक रूपान्तरणका लागि गाउँ र शहरमा सहकारीको स्थापना गर्न युवाहरूलाई प्रोत्साहन गरिनेछ ।

(च) कृषिऔजार, बीउबिजन आदि उपलब्ध गराउँदै कृषिक्षेत्रमा आधुनिकीकरण एवं व्यवसायीकरण गर्न आवश्यकतानुसार ऋण उपलब्ध गराई त्यस क्षेत्रको रोजगारमा लाग्न प्रोत्साहन गरिनेछ ।

(छ) "युवा रोजगार प्रवर्द्धन केन्द्र" स्थापना गरी युवा रोजगार कार्यक्रमलाई समन्वयात्मक तरिकाले स्थानीय तहसम्म विस्तार गरिनेछ ।

(ज) परम्परागत पेशालाई आधुनिकीकरण गर्न युवाहरूमा अभिरुचि बढाई त्यस क्षेत्रमा संलग्न युवाहरूलाई प्रोत्साहन तथा सम्मान गरिनुका साथै बजार व्यवस्थापन गर्न उपयुक्त वातावरण सिर्जना गरिनेछ । उनीहरूमा सक्षमता र सीप प्रवर्द्धन गर्ने सम्बन्धी विशेष कार्यक्रम ल्याइने छ ।

(झ) वैदेशिक रोजगारमा क्रियाशील दक्ष युवाहरूलाई स्वदेश फर्की स्वरोजगार र उद्यम गर्ने वातावरण तयार गरिनेछ ।

(ञ) वैदेशिक रोजगारमा जानुअगावै देशभित्रै युवाहरूलाई जनशक्तिको माग अनुरूपको औपचारिक तथा प्राविधिक तालिम दिई रोजगारीमा पठाउने कार्यक्रमलाई वढावा दिइनेछ ।

(ट) विदेशमा रहेका युवाहरूका विविध समस्याहरूलाई समाधान गर्न आवश्यक संयन्त्र निर्माण गरी युवाहरूलाई वैदेशिक रोजगारका नाममा ठगिनबाट बचाइनेछ ।

(ठ) महिलाका लागि गुणात्मक र मर्यादित वैदेशिक रोजगारी सुनिश्चित गर्न सुरक्षा र रोजगारमूलक कार्यक्रमहरूमा जोड दिइनेछ ।

(ड) युवा रोजगारी प्रवर्द्धन गर्न रोजगारसम्बन्धी कार्ययोजना बनाई क्रमशः कार्यान्वयन गरिनेछ ।

(ढ) वैदेशिक रोजगारीको सिलसिलामा मृत्यु भएका, अङ्गभङ्ग भएका, शारीरिक एवं मानसिक शोषण र विभेदमा परेका युवालाई क्षतिपूर्ति दिलाउन उचित पहल गर्दै उनीहरूलाई उद्धार गरी नेपालमा पुनर्स्थापना गराउने कार्यक्रम अघि बढाइनेछ ।

(ण) विभिन्न कारणले अन्यायमा परेका, हिरासतमा परेका, जेलमा परेका, कामबाट निकालिएका, सेवा सुविधा पाउन नसकेका युवाहरूलाई सम्बन्धित नेपाली दूतावासमार्फत कानुनी सेवा उपलब्ध गराई उनीहरूको श्रमिक अधिकारको रक्षा गर्न पहल गरिनेछ ।

(त) मजदुर युवाको लागि आठ घन्टे कार्यदिन र न्युनतम ज्यालादरको निर्धारण गरी त्यसलाई प्रभावकारी बनाउने र युवा मजदुरहरूउपर कार्यथलोमा हुने शारीरिक एवं मानसिक शोषण र विभेदको अन्त्य गरिनेछ ।

(थ) सुरक्षित, स्वस्थ्य र मर्यादित कामको प्रत्याभूति गर्दै श्रमिक अधिकारलाई स्थापित गर्ने कार्यक्रमहरूलाई वढावा दिई मजदुर युवाहरूको विकासमा जोड दिइनेछ ।

(द) जोखिमपूर्ण कामबाट युवालाई मुक्त गराउन सुरक्षित र मर्यादित काम सम्बन्धी नीतिसँग तादाम्य हुने गरी कार्यक्रम सञ्चालन गरिनेछ ।

(ध) सबै प्रकारका बधुँवा मजदुर प्रथालाई अन्त्य गर्न कानुनी र सामाजिक पहल गरिनेछ ।

(न) समान कामका लागि समान ज्यालाको प्रणाली लागू गरिनेछ।

**(६) युवाको सशक्तिकरण तथा नेतृत्व विकास :-**

(क) युवाहरूको आर्थिक, सामाजिक, राजनीतिक, एवं सांस्कृतिक सशक्तीकरणका लागि युवा सचेतना एवम् अभिमुखीकरण कार्यक्रम सञ्चालन गरिनेछ।

(ख) युवाहरूको वैयक्तिक र सामाजिक क्षमता विकास गर्न स्थानीय निकायहरूमार्फत कार्यक्रम सञ्चालन गरिनेछ।

(ग) युवाहरूलाई स्वदेश तथा विदेशको अनुभव दिलाउन युवा आदान-प्रदान, अध्ययन भ्रमण, देशदर्शन तथा युवाशिविर कार्यक्रम सञ्चालन गरिनेछ।

(घ) राष्ट्रिय तथा अन्तर्राष्ट्रियस्तरमा रचनात्मक कार्य गरी ख्याति कमाएका युवाहरूलाई पुरस्कृत गर्दै सम्मान दिलाउने कार्यक्रम सञ्चालन गरिनेछ।

(ङ) समानता, न्याय र स्वच्छताको संस्कृति विकास गर्न एवं युवाहरूको मनोवृत्तिमा सकारात्मक परिवर्तन गर्न युवा जागरण तथा जनचेतना अभियान सञ्चालन गरिनेछ।

(च) युवाले नेतृत्व गरेका सङ्घसंस्था एवं सङ्गठनहरूको क्षमता अभिवृद्धि गर्न विशेष कार्यक्रमहरू सञ्चालन गरिनेछन्।

(छ) युवाहरूको वृत्तिविकास तथा नेतृत्वविकासका लागि परामर्श तथा सेवाकेन्द्रको स्थापना गरिनेछ।

**(७) सहभागिता तथा परिचालन :-**

(क) नेपालको शान्ति प्रक्रिया, राज्यको पुनर्संरचना र संविधान निर्माण तथा तत्पश्चात्का राष्ट्रनिर्माणका कार्यहरूमा युवाको अर्थपूर्ण सहभागितालाई अभिवृद्धि गराई त्यसको कार्यान्वयनमा युवाहरूको अग्रणी भूमिकालाई जोड दिइनेछ।

(ख) अन्तर्राष्ट्रिय मञ्चहरूमा युवाको सहभागितालाई सुनिश्चित गर्ने वातावरण सिर्जना गर्न प्रवर्द्धनात्मक कार्यक्रमहरू सञ्चालन गरिनेछन्।

(ग) नीति निर्माण, योजना निर्माण र कार्यान्वयनका प्रक्रियाहरूमा युवाहरूलाई प्राथमिकताका साथ सहभागी गराउँदै लगिनेछ ।

(घ) युवाहरूमा उद्यमशीलताको विकास गर्न व्यवसाय सिर्जना (Business Incubation) सम्बन्धी कार्यक्रम सञ्चालन गरिनेछ ।

(ङ) युवाहरूलाई आर्थिक क्षेत्रका नीतिनिर्माण र निर्णयप्रक्रियाहरूमा सक्रियरूपमा सहभागी गराउन उत्प्रेरणात्मक कार्यक्रमहरू सञ्चालन गरिनेछ ।

(च) देशका प्राकृतिक स्रोत साधनहरूको सन्तुलित उपयोगमा समुदायको पहुँच कायम गर्दै सो कार्यमा युवाहरूलाई परिचालन गर्ने खालका कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

(छ) हरेक तहका सामाजिक प्रक्रियाहरूमा युवाहरूको अर्थपूर्ण सहभागितालाई प्रवर्द्धन गरिनेछ ।

(ज) विद्यालय व्यवस्थापन, सामाजिक विकास कार्यका लागि सञ्चालित सडक निर्माण, सामुदायिक व्यवस्थापन, समुदायमा आधारित विविध सङ्गठनहरूमा युवालाई सरिक गराइने नीति अख्तियार गरिनेछ ।

(झ) युवालाई समाजप्रति उत्तरदायी बनाई सामाजिक रूपान्तरणका वाहकका रूपमा परिचालित गर्न उत्तरदायित्व प्रवर्द्धनका कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

(ञ) युवाहरूलाई सामाजिक कार्यक्रममा हिस्सेदारका रूपमा सक्रिय सहभागी गराई सामाजिक जवाफदेहिता र उत्तरदायित्व बहन गर्ने वातावरण सिर्जना गरिनेछ ।

(ट) युवाहरू नै संस्कार र संस्कृति निर्माणका संवाहक भएको हुँदा आम नेपाली युवालाई सांस्कृतिक विचलनबाट मुक्त गराउँदै जनमुखी र प्रगतिशील संस्कृतिको निर्माणमा सहभागी गराइनेछ ।

(ठ) छुवाछुत, झुमा, देउकी, वादी, कमाराकमारी, हलिया, हरूवा, कमैया, दाइजो, छाउपडी प्रथाजस्ता कुरीति, अन्धविश्वास र चिन्तनबाट ग्रसित

संस्कृतिका विरूद्ध आम युवालाई परिचालन गर्दै जनमुखी र लोकतान्त्रिक संस्कृतिलाई स्थापित गर्ने चेतनामूलक कार्यक्रमहरूमा युवा परिचालन गरिनेछ ।

(ड) सामाजिक सेवाका विविध पक्षहरूमा युवालाई स्वयंसेवकका रूपमा परिचालन गरिनेछ ।

(ढ) महिला र पुरूष बीच समानताको संस्कृति विकास गर्न युवा परिचालन गरी सचेतनामूलक कार्यक्रम सञ्चालन गरिनेछन् ।

(ण) युवालाई सही विचार र सकारात्मक दृष्टिकोण निर्माण र विकासको वातावरण तयार गरी स्वच्छता र सदाचारका लागि सामाजिक एवं सांस्कृतिक कुरीति र कुसंस्कारका विरूद्ध सशक्तरूपमा परिचालन गरिनेछ ।

(त) युवाहरूलाई तालिम दिई स्वयंसेवकका रूपमा देशको आर्थिक, सामाजिक रूपान्तरण तथा विकासमा सरिक गराउने र राज्यमा आइपर्ने विपत्ति, दुर्घटना तथा आपत्कालीन अवस्थामा उद्धार कार्यमा युवा परिचालन गर्ने नीति अवलम्बन गरिनेछ ।

(थ) लोकतान्त्रिक मूल्यमान्यता र संस्कृतिको विकास एवं प्रवर्द्धनमा युवा परिचालन गरिनेछ ।

**(८) कला, संस्कृति, खेलकुद तथा मनोरञ्जन :-**

(क) नेपालमा रहेका विभिन्न कला र सांस्कृतिक धरोहरहरूको संरक्षण र सम्बर्द्धन गर्न युवाहरूलाई प्रशिक्षित गरी परिचालन गरिनेछ ।

(ख) युवाहरूलाई राष्ट्र र जनताका सेवामा अभिप्रेरित गराउन जनताको मानसिक र शारिरीक तन्दुरूस्ती राख्ने कुरालाई ध्यान दिँदै राष्ट्रको गौरव र प्रतिष्ठा बढाउने ढङ्गले खेलकुद क्षेत्रलाई संस्थागत रूपमा विकास गर्न जोड दिइनेछ ।

(ग) खेलकुद, कला र साहित्यको विकासको लागि विद्यालय र क्याम्पस तहदेखि नै योजनाबद्ध ढङ्गले नियमितरूपमा प्रशिक्षण गराउने र स्वस्थ

प्रतिस्पर्धाको माध्यमबाट राष्ट्रियस्तरका खेलाडी, कलाकार र साहित्यकारको विकास गराउने नीति अवलम्वन गरिनेछ।

(घ) विभिन्न साहित्यिक संस्था, सांस्कृतिक समूह, नाट्य मण्डली, खेलकुद क्लबहरूलाई प्रोत्साहित गर्न आकर्षक पुरस्कार, सम्मान र आर्थिक तथा भौतिक सुविधा प्रदान गर्ने कार्यक्रम सञ्चालन गरिनेछन्।

(ङ) युवाहरू माफ्र्त खेलकुद, सिर्जनशीलता तथा अभिव्यक्ति कलाप्रति अभिरूचि वढाउन प्रशिक्षण, प्रतिस्पर्धा एवम् प्रोत्साहन गर्नुको साथै अन्तर्राष्ट्रिय प्रतियोगिताहरूमा प्रतिस्पर्धात्मक सहभागिता बढाई राष्ट्रको गौरव वढाइनेछ।

(च) टोल, गाउँ, नगर र जिल्ला तहमा सांस्कृतिक तथा खेलकुद केन्द्रहरू खोल्न प्रोत्साहन गरी सांस्कृतिक, कला र खेलकुदको विकास गर्न स्थानीय निकायहरूलाई परिचालन गरिनेछ।

(छ) खेलकुदमा महिला सहभागिताको विस्तार गर्न विभिन्न प्रतियोगिताहरूको आयोजना गरिनेछ।

(ज) अपाङ्गता भएका युवाहरूबीच मैत्रीपूर्ण खेलहरू सञ्चालन गरी मनोरञ्जनात्मक गतिविधिहरूलाई बढावा दिइनेछ।

**(९) लागू पदार्थ दुर्व्यसन नियन्त्रण :-**

(क) युवाहरूमा दुर्व्यसन र विकृतिलाई निरूत्साहित गर्न निरोधात्मक तथा उपचारात्मक कार्यक्रमहरू सञ्चालन गर्न सरकारी, निजी क्षेत्र, राजनीतिक सङ्गठन र गैरसरकारी सङ्घ संस्थाहरूलाई व्यापक रूपमा परिचालित गरिनेछ।

(ख) लागूऔषध प्रयोग गर्ने युवाहरूको पुनर्स्थापना गर्न परामर्श तथा पुनर्स्थापना केन्द्रहरू सञ्चालन गरिनेछन्।

(ग) लागूऔषध प्रयोगकर्तालाई पुनर्स्थापना एवं रोजगारीको व्यवस्था गरी उनीहरूको सामाजिक जीवनलाई सहज बनाउने कार्यक्रमहरू सञ्चालन गरिनेछन्।

(घ) १८ वर्ष मुनिका युवाहरूलाई मदिराजन्य र सुर्तीजन्य पदार्थको खरिद बिक्रीमा पहुँच नहुने व्यवस्था गरिनेछ ।

**(१०) मानव तस्करी तथा मानव बेचबिखन नियन्त्रण :-**

(क) विभिन्न मुलुकहरूमा भइरहेको नेपाली युवाहरूको तस्करी रोक्न कानुनी व्यवस्थालाई अझ कडाईका साथ लागू गरिनेछ ।

(ख) अवैध एवं असुरक्षित गन्तव्यमा नेपाली युवाहरूलाई विदेशिन नदिन आवश्यक प्रबन्ध गरिनेछ ।

(ग) मुलुकभित्र र बाहिर हुने गरेको मानव बेचबिखन खास गरी महिला बेचविखनलाई रोक्न विशेष कार्यक्रम सञ्चालन गर्नुका साथै यस्ता जोखिममा रहेको समुदायलाई शिक्षा र रोजगारीका लागि विशेष प्राथमिकता प्रदान गरिनेछ ।

(घ) बेचबिखनमा परेका तथा वैदेशिक रोजगारीका नाउँमा ठगिएका युवाहरूलाई नेपाल फर्काउन विशेष प्रबन्ध गर्दै तिनलाई नेपाली समाजमा सहज जीवनयापन गर्न सक्ने वातावरण सिर्जना गरिनेछ ।

(ङ) अन्तर्राष्ट्रिय सीमाक्षेत्रमा युवाहरू खासगरी महिलालाई सङ्गठित गरी मानव ओसारपसार तथा बेचबिखनको रोकथाम तथा नियन्त्रणमा परिचालन गरिनेछ ।

**(११) वातावरण संरक्षण र दिगो विकासमा युवा सहभागिता :-**

(क) युवाहरूलाई विश्वव्यापी जलवायु परिवर्तन, तापमानमा वृद्धि, अन्तरिक्ष प्रदूषण, जलवायु प्रदूषण, प्राकृतिकस्रोतको अव्यवस्थित अतिदोहनलाई रोक्न वातावरण संरक्षणसम्बन्धी प्रशिक्षणमूलक कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

(ख) वातावरण संरक्षण, सम्वर्द्धन र प्रवर्द्धन गर्ने कार्यमा आम युवालाई सहभागी बनाइने कार्यक्रम संचालन गरिनेछ ।

(ग) दिगो विकास तथा वातावरण संरक्षणमा युवासमूहहरूको सहभागिता बढाउने कार्यक्रमहरूलाई प्राथमिकता दिइनेछ ।

**(१२) विज्ञान तथा सूचना प्रविधिमा युवाको पहुँच :-**

(क) विज्ञान तथा प्रविधि क्षेत्रका विशिष्ट युवा प्रतिभाहरूलाई प्रोत्साहन गर्ने तथा उनीहरूलाई विदेशमा अध्ययन तथा तालिमको व्यवस्था गरी स्वदेशमा सम्मानित स्थान दिने वातावरण तयार गरिनेछ ।

(ख) साधनस्रोतहरूको उपयोग, कृषि, पशुपालन, जडीबुटी उत्पादन तथा प्रशोधन, जलविद्युत् लगायतका क्षेत्रहरूमा आधुनिक प्रविधिको विकासमा मेधावी युवाहरूलाई आकर्षित गर्न विशेष छात्रवृत्तिको व्यवस्था गरिनेछ ।

(ग) सूचना तथा सञ्चार प्रविधिमा ग्रामीण क्षेत्रका युवाहरूको पहुँच कायम गर्न समन्वयात्मक ढङ्गले कार्यक्रम सञ्चालन गरिनेछ ।

(घ) विशेष प्राथमिकताको समूहमा परेका युवाहरूलाई सूचना प्रविधिसम्बन्धी तालिम सञ्चालन गरिनेछ ।

(ङ) विश्वव्यापीकरणको युगमा आम नेपाली युवालाई सूचना र सञ्चार प्रविधिमा दक्ष बनाउँदै विश्व बजारमा रहेको प्रतिस्पर्धामा खरो उत्रन सक्ने गरी तयार पार्ने कार्यक्रमहरू अगाडि ल्याइनेछ ।

**(१३) अपराध तथा हिंसामा संलग्नताबाट युवालाई मुक्त गर्ने :-**

(क) विभिन्न प्रकारका हिंसामा देखिएको युवाहरूको संलग्नतालाई निरूत्साहित गर्न विशेष कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

(ख) आपराधिक, गैरकानुनी, तथा असामाजिक क्रियाकलापमा युवाहरूको संलग्नतालाई निरूत्साहित गर्न विशेष प्रबन्ध मिलाइनेछ ।

(ग) अपराध, हिंसा, गैरकानुनी तथा गैरसामाजिक क्रियाकलापहरूमा संलग्न युवाहरूलाई सुधारपश्चात् पुनर्स्थापित गर्ने र समाजमा सहज जीवनयापनको वातावरण बनाउन समन्वयात्मक ढङ्गले कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

**(१४) दिगो शान्ति स्थापना र द्वन्द्व समाधानमा युवा सहभागिता :-**

(क) शान्ति स्थापना, मेलमिलाप र सत्यनिरूपणका प्रक्रियाहरूमा युवाहरूको सार्थक सहभागिता सुनिश्चित गरिनेछ ।

(ख) युवा सङ्घ/सङ्गठन तथा संस्थाहरूलाई शान्ति स्थापना तथा द्वन्द्व समाधानमा सहभागी बनाइनेछ ।

(ग) वर्ग, जाति, भाषा, क्षेत्र र लिङ्गका आधारमा देखिएका विभाजनहरूलाई कम गर्न युवाहरूलाई प्रशिक्षित र परिचालित गर्ने कार्यक्रमहरूलाई बढावा दिइनेछ । विविधताको सम्मान गर्दै राष्ट्रिय एकता कायम गर्न युवाहरूलाई प्रोत्साहन गरिनेछ ।

**(१५) समविकास :-**

(क) सामाजिक समावेशीकरणको नीति कार्यान्वयन गर्न विशेष प्राथमिकताको समूहमा रहेका युवाहरूलाई दृष्टिगत गरी विशेष कार्यक्रम सञ्चालन गरिनेछ ।

(ख) आर्थिक दुरवस्थाबाट गुज्रिएका गरिव युवाहरूको प्रतिभा पहिचान गरी राज्यले उनीहरूको विकासमा सहयोग गर्ने कार्यक्रमहरू अघि सार्नेछ ।

(ग) अध्ययन तथा छात्रवृत्तिका लागि प्राथमिकताको समूहमा परेका र गरिवीको रेखामुनि रहेका युवाहरूलाई सकारात्मक विभेदको कार्यक्रममार्फत् राष्ट्रिय मूलधारमा ल्याइनेछ ।

(घ) प्राथमिकताको समूह तथा बिशेष प्राथमिकताको समूहमा रहेका युवाहरूका लागि शिक्षाको प्रचार प्रसार गर्न शिक्षित र सक्षम युवालाई संवाहकका रूपमा परिचालन गरिनेछ ।

**(१६) विशेष समूहगत प्राथमिकताहरू :-**

(क) अपाङ्गता भएका युवाहरूले सहज ढङ्गले शिक्षा ग्रहण गर्न सक्ने विशेष शिक्षण पद्धति अपनाउँदै सुविधायुक्त विद्यालय र शैक्षिक केन्द्रहरू स्थापना गरिनेछ । क्षमता अनुसारको सीपमूलक र व्यावसायिक शिक्षा प्रदान गर्दै

अपाङ्गता भएका व्यक्तिहरूले कार्यसम्पादन गर्न सक्ने रोजगारीको पहिचान गरी आवश्यक व्यवस्था मिलाइनेछ । सार्वजनिक यातायात, भवन, शौचालय लगायतका स्थान वा सेवालाई अपाङ्ग मैत्री बनाउने व्यवस्था मिलाइनेछ । साथै अपाङ्गता भएका युवाहरूलाई आवश्यक पर्ने सहयोगी सामग्रीहरूलाई सहज र सुलभ ढङ्गले उपलब्ध गराउने व्यवस्था मिलाइनेछ ।

(ख) जोखिममा रहेका युवाहरूको उपचार एवं पुनर्स्थापनाको कार्यक्रम सञ्चालन गर्दै सीपमुलक र व्यावसायिक शिक्षा प्रदान गरी उचित रोजगारीको व्यवस्था गरी समाजमा पुनर्स्थापित गराउने नीति अवलम्बन गरिनेछ ।

(ग) द्वन्द्व पीडित युवाहरूलाई शिक्षा, स्वास्थ्य र रोजगारीका क्षेत्रमा विशेष प्राथमिकता प्रदान गर्ने व्यवस्था मिलाई पुनर्स्थापना गर्ने कार्यक्रमहरू अघि वढाइनेछ । साथै सीपमूलक तालिमको व्यवस्था गरी रोजगारीको उचित प्रबन्ध गर्ने कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

(घ) अल्पसङ्ख्यक र सीमान्तकृत युवाहरूको प्राकृतिक, सामाजिक, सांस्कृतिक एवं परम्परागत स्रोत माथि पहुँच कायम गर्न विशेष कार्यक्रमहरू सञ्चालन गरिनेछन् । साथै परम्परागत पेशा र सीपको संरक्षण, सम्वर्द्धन र आधुनिकीकरणमा विशेष जोड दिइनेछ । शिक्षा, स्वास्थ्य र रोजगारीको क्षेत्रमा यस समूहका युवालाई विशेष प्राथमिकता प्रदान गरी सशक्तीकरण र अभिमुखीकरण गर्दै राष्ट्रिय विकासको मूलधारमा समाहित गरिनेछ ।

**(१७) साझेदारी :-**

(क) युवा समुदायको विकास गर्न सरकार, स्थानीय निकाय, युवा सङ्घ–सङ्गठन, दातृ समुदाय, गैरसरकारी संस्थाहरू र निजी क्षेत्रको साझेदारीमा विभिन्न कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

(ख) अन्तर्राष्ट्रियस्तरमा नेपालले गरेका प्रतिबद्धताहरू कार्यान्वयन गर्न उपयुक्त कार्यक्रमहरू संचालन गरिनेछन् ।

(ग) गैरआवासीय नेपाली युवाहरूलाई लगानीको उपयुक्त नीति र वातावरण बनाई नेपालमा लगानीका लागि आकर्षित गरिनेछ।

(घ) सरकारी तथा गैरसरकारी निकायहरूसँगको सहभागितामा शान्ति र विकासका क्षेत्रमा युवाहरूसँग साझेदारी गर्ने र युवासम्बन्धी कार्यक्रम सञ्चालनका लागि आवश्यकतानुसार कोषको स्थापना गरिनेछ।

(ङ) स्थानीय निकायबाट सञ्चालन हुने कार्यक्रमहरूमा निश्चित बजेट छुट्याई युवा विकासका लागि कार्यक्रमहरू सञ्चालन गर्ने व्यवस्था मिलाइनेछ।

(च) यस नीतिले प्राथमिकता निर्धारण गरेका क्षेत्रमा गरिने लगानीलाई प्रोत्साहन गर्ने कार्यक्रमहरू सञ्चालन गरिनेछन्।

८. **<u>संस्थागत व्यवस्था</u> :-**

**(१) सरकारी क्षेत्र :-**

यस युवा नीतिको कार्यान्वयनका लागि छुट्टै ऐनको व्यवस्था गरी एक स्वशासित एवं कार्यकारी राष्ट्रिय युवा परिषद्को गठन गरिनेछ । यसमा सम्बन्धित निकायका प्रतिनिधि, राजनीतिक दलका युवा सङ्गठनका प्रतिनिधि लगायत नेपाल सरकारबाट नियुक्त पदाधिकारीहरू रहनेछन् । परिषद्को केन्द्रदेखि स्थानीय तहसम्म संरचनात्मक व्यवस्था मिलाईनेछ । परिषद्मा नेपाल सरकारबाट पदाधिकारीको नियुक्ति तथा मनोनयन गर्दा मधेसी, आदिबासी जनजाति, दलित, पिछडिएको क्षेत्र, अपाङ्ग, अल्पसङ्ख्यक समुदायहरूको समानुपातिक समावेसी प्रतिनिधित्व गराउने व्यवस्था गरिनेछ। साथै सबै तहमा ३३ प्रतिशत महिलाहरूको सहभागिता सुनिश्चित गरिनेछ। परिषद्ले सरकारी गैरसरकारी तथा निजी क्षेत्रबाट सञ्चालित युवासम्बन्धी कार्यक्रमहरूको संयोजन, समन्वय तथा सहजीकरण गर्नेछ । स्थानीय तहमा युवाहरूको आवश्यकतानुसार यस नीति बमोजिम युवा सूचना तथा अनुसन्धान केन्द्र, युवा परामर्श तथा सेवा केन्द्र, युवा रोजगार प्रवर्द्धन केन्द्र जस्ता संरचनाहरू स्थापना गरिनेछन्। परिषद् तथा मातहतका निकायहरूको कार्यसंचालन गर्न आवश्यकतानुसार कानून बनाई आर्थिक तथा प्रशासनिक व्यवस्थाहरू मिलाइनेछ।

(२) **गैरसरकारी क्षेत्र :-**

युवासम्बन्धी कार्यक्रमहरू सञ्चालन गर्न युवा सङ्घ/सङ्गठनहरू, राष्ट्रिय तथा अन्तर्राष्ट्रिय गैरसरकारी सङ्घ-संस्थाहरू, निजी क्षेत्र, नागरिक समाज र स्थानीय निकायहरूलाई प्रोत्साहन तथा परिचालन गरी उपयुक्त वातावरण सिर्जना गरिनेछ । यस्ता संघ-संस्थाहरूको स्रोतलाई युवासम्बन्धी कार्यक्रममा परिचालन गर्न साझेदारको रूपमा लिइनेछ । यस कार्यको निर्देशन तथा समन्वय राष्ट्रिय युवा परिषद्ले गर्नेछ ।

९. **अनुगमन र मूल्याङ्कन** :-

यस राष्ट्रिय युवा नीति कार्यान्वयन गर्दा यसले प्राप्त गर्ने प्रतिफल र उद्देश्यहरू पूर्ण वा आंशिक रूपमा पूरा भए भएनन् सोको अनुगमन र मूल्याङ्कन गर्ने संयन्त्रका रूपमा नेपाल सरकारको युवा तथा खेलकुद मन्त्रालय रहने छ । यसका लागि आवश्यकतानुसार मन्त्रालयको संस्थागत क्षमताको अभिवृद्धि गर्ने व्यवस्था मिलाइनेछ । अनुगमन तथा मुल्याङ्कनका लागि सहभागितामूलक अनुगमन प्रणाली अवलम्बन गर्ने नीति अख्तियार गरिनेछ । यो नीति प्रत्येक ५ वर्षमा नियमितरूपमा पुनरावलोकन गरी परिमार्जन र सुधार गरिनेछ । यस नीतिको तर्जुमा गर्दा वृहद् राष्ट्रिय युवा सर्वेक्षण गरी नसकिएकोले केन्द्रीय तथ्याङ्क विभागले गर्दै गरेको किशोर तथा युवा सर्वेक्षणपश्चात् यस नीतिलाई आवश्यकता अनुसार परिमार्जन गरिने छ ।